


# गृह मन्त्रालयको अन्यलिङ्गी निर्देशिका: मानव अधिकारको हनन

**Ministry of Home Affairs directive on others gender : Violation of human rights**

क्वयेर युथ ग्रुप र क्याम्पेन फर चेन्ज

CampaignforChange
Queer Youth Group
क्वयेर युथ ग्रुप

# गृह मन्त्रालयको अन्यलिङ्गी निर्देशिका: मानव अधिकारको हनन

**Ministry of Home Affairs directive on others gender : Violation of human rights**

क्वयेर युथ ग्रुप र क्याम्पेन फर चेन्ज

Queer Youth Group and Campaign for Change

# गृह मन्त्रालयको अन्यलिङ्गी निर्देशिका: मानव अधिकारको हनन

# Ministry of Home Affairs directive on others gender: Violation of human rights

लेखक तथा प्रकाशक:

क्वयेर युथ ग्रुप र क्याम्पेन फर चेन्ज

Author and Publisher:
Queer Youth Group and Campaign for Change

गृह मन्त्रालयको अन्यलिङ्गी निर्देशिका: मानव अधिकारको हनन

Ministry of Home Affairs directive on others gender: Violation of human rights

लेखक तथा प्रकाशक : क्वयेर युथ ग्रुप र क्याम्पेन फर चेन्ज

Author and Publisher: Queer Youth Group and Campaign for Change

छपाईका लागि आर्थिक सहयोग : क्याम्पेन फर चेन्ज

Support for printing: Campaign for Change

Paperback

ISBN: 978-9937-0-8913-5

| | | | | | |
|---|---|---|---|---|---|
| ने.सं. | : | १११४१ बछला ३१ | N.S. | : | 1141/07/31 |
| वि.सं. | : | २०७८ जेठ ३ | B.S. | : | 2078/02/03 |
| ई.सं. | : | २०२१ मे १७ | C.E. | : | 2021/05/17 |

# भूमिका

लैङ्गिक पहिचान सम्बन्धी नेपालमा विभिन्न तवरले आन्दोलन र अभियान सञ्चालन भइरहँदा नेपाल सरकारका केही निकायहरूले पनि यस विषयलाई सम्बोधन गर्न केही पहल गरेका छन् । सर्वोच्च अदालतद्वारा पनि लैङ्गिक पहिचानका विषयमा केही नजीर सिद्धान्त प्रतिपादन भएका छन् । नेपाल सरकारका विभिन्न निकायहरूले नीतिनियम बनाउँदै गर्दा गृह मन्त्रालयले लिङ्गको महलमा 'अन्य' उल्लेख गरि नागरिकता जारी गर्ने सम्बन्धि निर्देशिका लागु गरेको छ ।

लैङ्गिक पहिचान सहितको नागरिकता निर्वाध रूपमा प्राप्त गर्नको लागि उक्त निर्देशिका जारी गरिएको भनिएतापनि उक्त निर्देशिकामा उल्लेखित परिभाषा र प्रावधानले लैङ्गिक पहिचानको हकलाई सुनिश्चित गर्दैन । सुनिश्चित मात्र नगर्ने होइन कि उक्त निर्देशिकाले लैङ्गिक पहिचानको हकलाई अझै कुण्ठित गरेको छ । यौन अभिमुखिकरण भनेको के हो, लैङ्गिक पहिचान भनेको के हो, यौन विशेषता भनेको के हो लगायत सामान्य शब्दावली र तिनका अवधारणाको बुझाई नै नराखी उक्त निर्देशिका जारी भएको देखिन्छ । एकातिर लैङ्गिक पहिचान नै नभएका पहिचानहरूलाई समेत लैङ्गिक पहिचान अन्तरगत परिभाषित गरेको छ भने महिला वा पुरुष भनि पहिचान गर्ने जनसंख्यालाई समेत 'अन्यलिङ्गी' उल्लेख गरि नागरिकता लिन बाध्य बनाइएको छ । महिला पुरुष बाहेकका लैङ्गिक पहिचानहरूलाई पनि स्वतः अन्यकरण गरि यस निर्देशिकाले लक्षित जनसंख्यालाई राहत भन्दा पनि आहत पुर्याएको छ ।

तसर्थ सन् २०२० मा नेपाल संवत् सौर्यमानक पात्रोको नयाँ वर्षका दिन हामीले गृह मन्त्रालयद्वारा जारी गरिएको यस निर्देशिकाले हाम्रो मानव अधिकारलाई हनन गरेको विषय उठाएर राष्ट्रिय मानव अधिकार आयोगमा उजुरी दियौँ । उक्त उजुरीमा हामीले गृह मन्त्रालयको अन्यलिङ्गी निर्देशिकाले क-कस्ता समस्याहरूलाई संस्थागत गरेको छ भन्ने बारेमा खण्डन गरेका छौँ भने यस समस्यालाई सामाधान गर्न माग पनि गरेका छौँ। सोही उजुरी र त्यसको अङ्ग्रेजी अनुवादलाई यस पुस्तकमा संगालिएर प्रकाशन गरेका हौँ। यो पुस्तकले गृह मन्त्रालयको अन्यलिङ्गी निर्देशिका किन समस्यामूलक छ भन्ने बारे बुझ्न बुझाउन मद्दत गर्छ भन्ने आशा गर्दछौँ।

# Preface

While various movements and campaigns are ongoing in Nepal regarding the issue of gender identity, some government stakeholders have attempted to address this issue. The Supreme Court has also established some precedent regarding gender identity. While various stakeholders are taking their own initiations, the Ministry of Home Affairs has promulgated a directive on issuing citizenship certificate with the gender designation ‘others’.

While the directive states its objective to ensure people being able to undisputedly exercise their right to gender identity, none of the provisions and definitions ascribed in the directive ensures so. The directive not only does not ensure the right to gender identity, but further curtails it. The directive has been promulgated without having a basic knowledge of sexual orientation, gender identity and sex characteristics (SOGIESC). On one hand, the directive has defined sexual orientations as gender identity and on the other hand has obliged those individuals who identify as male or female to tick the ‘other gender’ marker. The directive is also othering for those who have a gender identity that is neither male nor female. The directive has been rather violating than ensuring the right of gender identity.

That is why we filed a complaint at National Human Rights Commission in 2020, on the new year day of the Nepal Sambat solar calendar, explaining how the directive has violated our human rights and demanding for solutions. The complaint was officially filed in Nepali language and we have also translated it in English. This book complies both of those. We hope this book will help everyone understand why the ‘other gender’ legislation in Nepal is problematic.

नेपालको 'अन्यलिङ्गी' कानूनलाई चित्रण गर्दै दीप्स श्रेष्ठद्वारा बनाइएको चित्रांकन




@deepsh_official

नेपालको 'अन्यलिङ्गी' कानूनलाई चित्रण गर्दै दीप्स श्रेष्ठद्वारा बनाइएको चित्रांकन

Art by Deepsh Shrestha depicting the ‘other gender’ legislation of Nepal

# विषय सूची

# Table of contents

*दर्ता नं – ६५४*
*दर्ता मिति - २०७७ मंसिर ७, **22 November 2020**, नेसं ११४१ थिंला ४ (आइतबार)*

*मस्यौदा गर्ने व्यक्ति : रुक्शना कपाली*

***यो दस्तावेज सक्कल उजुरीको सार्वजनिक प्रति हो । यसमा केही संवेदनशील एवं गोप्य विवरणहरू हटाइ प्रकाशित गरिएको छ । नेपाल संवत् ११४१ साल 'बाध्यकारी अन्यलिङ्गी लेबल भिराइने विरुद्ध र लैङ्गिक पहिचानको मान्यताका लागि कार्य वर्ष ११४१' (#Actionof1141) अन्तर्गत यो उजुरी गरिएको थियो । नेपाल संवत् ११४१को सौर्यमानक पात्रो अनुसारको नयाँ वर्षकै दिन यो उजुरी आयोगलाई ईमेल मार्फत पठाइएको थियो भने उपरोक्त उल्लिखित मितिमा दर्ता भई दर्ता नं प्राप्त गरेका हौँ।***

---

**नेसं ११४१ कछला १**
**२०७७ कार्तिक ४**

श्री सचिवज्यू,
राष्ट्रिय मानव अधिकार आयोग,
दुरुख्यः (हरिहरभवन), ललितपुर।

**विषय: गृह मन्त्रालयले जारी गरेको "यौनिक तथा लैङ्गिक अल्पसंख्यक समुदायका व्यक्तिहरूलाई लिङ्गको महलमा 'अन्य' जनाई नागरिकता जारी गर्ने सम्बन्धी निर्देशिका, २०६९"ले हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषतका व्यक्तिहरूको मानव अधिकारको उल्लंघन भएको हुँदा उक्त उल्लंघनहरुको अनुसन्धान गरी आवश्यक कारवाहीका सम्बन्धित निकायलाई उक्त निर्देशिका बदर गरी सही परिभाषा सहित लैङ्गिक पहिचान बमोजिमको नागरिकता प्राप्त गर्न सघन समावेशी निर्देशिका/कानुन निर्माण गर्न सिफारिस गरी पाउँ।**

महोदय,

उपरोक्त सम्बन्धमा गृह मन्त्रालयले "यौनिक तथा लैङ्गिक अल्पसंख्यक समुदायका व्यक्तिहरुलाई लिङ्गको महलमा 'अन्य' जनाई नागरिकता जारी गर्ने सम्बन्धी निर्देशिका, २०६९" जारी गरी लागु गरेको छ। यसको प्रस्तावानमा यौनिक तथा लैङ्गिक अल्पसंख्यक समुदायका व्यक्तिहरुले आफ्नो पहिचान सहितको

अधिकार निर्वाध रुपमा उपभोग गर्न पाउने वातावरण सृजना गर्नको लागि यस समुदायका व्यक्तिहरुलाई लिङ्गको महलमा महिला वा पुरुष बाहेक 'अन्य' उल्लेख गरी नागरिकता जारी गर्न आवश्यक देखिएको भन्ने उल्लेख छ। उक्त निर्देशिकाको उद्देश्य "यौनिक तथा लैङ्गिक अल्पसंख्यक समुदायका व्यक्तिहरुले आफ्नो पहिचान सहितको अधिकार निर्वाध रुपमा उपभोग गर्न पाउने वातावरण सृजना गर्नको लागि" भनी उल्लेख गरिएको भएतापनि विगत ७ वर्ष देखि उक्त निर्देशिकाले वास्तविक लैङ्गिक पहिचानमा नागरिकता प्रमाणपत्र प्राप्त गर्नबाट बाधा सृजना गरी हामी निवेदकहरूको मानव अधिकार र संविधान प्रदत्त लैङ्गिक पहिचानको अधिकार लगयात विभिन्न हकहरू उल्लंघन गरेको छ।

## प्रकरण १ : परिभाषा

संयुक्त राष्ट्र संघ लगायत यस क्षेत्रमा क्रियाशिल हामी निवेदक तथा विभिन्न संघसंस्थाहरुले गरेको अध्ययन अनुसन्धान एवं जारी दस्तावेजहरुमा लैङ्गिक तथा यौनिक अल्पसंख्यक जनसंख्याको पहिचान, बिविधता र यस जनसंख्याका व्यक्तिहरुका सम्बन्धमा प्रयोग गरिने भाषा एवं शब्दावली निम्नानुसार रहेको पाईन्छ।

### (क) यौन अभिमुखिकरण (Sexual Orientation)

कुनै व्यक्ति कुन लैङ्गिकताका अरु व्यक्तिहरू तर्फ यौन तथा प्रणयात्मक (*sexual and romantic*) आकर्षण महसुस गर्दछ भन्ने आधारमा नीजको यौनिक पहिचानलाई यौन अभिमुखिकरण भनिन्छ। जसमा ***विषमयौनिक (Heterosexual/Straight)*** व्यक्ति भन्नाले आफू भन्दा फरक/विपरीत लैङ्गिकता प्रति यौन तथा प्रणयात्मक आकर्षण महसुस गर्ने ब्यक्तिलाई बुझाउँछ। ***समयौनिक (Homosexual)*** व्यक्ति भन्नाले आफू जस्तै/उस्तै लैङ्गिकता प्रति यौन तथा प्रणयात्मक आकर्षण महसुस गर्ने व्यक्ति (*Gay* र *Lesbian*) लाई बुझाउछ। त्यसैगरी आफू भन्दा फरक र आफू जस्तै लैङ्गिकता दुबै प्रति यौन तथा प्रणयात्मक आकर्षण महसुस गर्ने व्यक्तिलाई ***द्वियौनिक (Bisexual)*** यौन अभिमुखीकरण भएको व्यक्ति भनेर बुझिन्छ। ***सर्वयौनिक (Pansexual)*** भन्नाले सबै खाले लैङ्गिकता प्रति यौन तथा प्रणयात्मक आकर्षण महसुस गर्ने व्यक्ति र ***अयौनिक (Asexual)*** व्यक्ति भन्नाले कुनै प्रकारको यौन र/वा प्रणयात्मक आकर्षण महसुस नगर्ने व्यक्तिलाई बुझिन्छ। उल्लेखित शब्दहरु ब्यक्तिको यौन अभिमुखिकरणको पहिचान गर्न प्राय प्रयोगमा आउने शब्दहरु भएतापनि यतिमा मात्र सीमित छैन। यौन अभिमुखिकरण सम्बन्धी शब्द र पहिचानहरू विकासोन्मुख र गतिशील (*evolving and dynamic*) छन्।

### (ख) लैङ्गिक पहिचान (Gender Identity)

लैङ्गिक पहिचान भन्नाले हरेक व्यक्तिको भित्री मन वा अन्तरात्माबाट लैङ्गिकता सम्बन्धी आएको व्यक्तिगत अनुभूती र अनुभव एवं भित्री मनबाट आएको आन्तरिक बोध र नीजले त्यसलाई गर्ने प्रस्तुतीकरण तथा आफ्नो लैङ्गिकता चिनाउन प्रयोग गर्ने शब्दवाली हो।

सामाजिक मूल्य मान्यता अनुसार कुनै शिशु जन्मने बित्तिकै नीजको यौन अङ्ग वा विशेषताको आधारमा नीजलाई केटा वा केटी भनेर गरिने निर्धारण हो। कुनै शिशु जन्मन बित्तिकै नीजको यौनाङ्ग शिश्न (Penis) भएको आधारमा नीजलाई केटा/पुरुष भनी निर्धारण गरिन्छ र त्यसलाई जन्मँदा पुलिङ्गी इङ्गित गरिएका व्यक्ति (*Assigned male at birth*) भनिन्छ भने कुनै शिशु जन्मन बित्तिकै नीजको यौनाङ्ग योनी (Vagina) भएको आधारमा नीजलाई केटी/महिला भनी निर्धारण गरिन्छ र त्यसलाई जन्मँदा स्त्रीलिङ्गी इङ्गित गरिएका व्यक्ति (*Assigned female at birth*) भनिन्छ। जन्मँदा यौनाङ्गका आधारमा इङ्गित गरिएको लिंगसँग मेल खाने लैङ्गिक पहिचान भएका व्यक्तिहरूलाई ***त्याचलैङ्गिक व्यक्ति (Cisgender person)*** पनि भनिन्छ।

जन्मँदा यौनाङ्गका आधारमा इङ्गित गरिएको लिंगसँग मेल नखाने लैङ्गिक पहिचान भएका व्यक्तिहरूलाई ***पारलैङ्गिक व्यक्ति (Transgender person)*** भनिन्छ। पारलैङ्गिक महिला (*Transgender female*) हरूलाई जन्मँदा यौनाङ्गका आधारमा बालक/केटा भनी इङ्गित गरिएको हुन्छ र उनीहरूको लैङ्गिक अनुभूती, प्रस्तुतीकरण एवं पहिचान 'महिला' रहन्छ। पारलैङ्गिक पुरुष (*Transgender male)* हरूलाई जन्मँदा यौनाङ्गका आधारमा बालिक/केटी भनी इङ्गित गरिएको हुन्छ र उनीहरूको लैङ्गिक अनुभूती, प्रस्तुतीकरण एवं पहिचान 'पुरुष' रहन्छ।

पुरुष वा महिलाको परिभाषामा नअटाउने विभिन्न लैङ्गिक पहिचान भएका व्यक्तिहरूलाई गैर-द्वयसांखिक (*Non-binary*) भनिन्छ। पारम्पारिक लैङ्गिक भिन्नता सँग सम्बन्धित नरहेका र महिला वा पुरुष लैङ्गिकता दुबै नरहेको, दुबै रहेको वा मिश्रण जनाउने लैङ्गिक पहिचानहरूको विविधतलाई गैर-द्वयसांखिक भनिन्छ। यस अन्तर्गत कुनै लैङ्गिकतासँग सम्बन्ध नराख्ने अलैङ्गिक (*Agender*), आफुलाई महिला र पुरुष दुबै भनेर पहिचान गर्ने दुईलैङ्गिक (*Bigender*), आफुलाई कुनै पनि लैङ्गिकतामा नराख्ने/महशुस नगर्ने वा आफ्नो लैङ्गीकतामा प्रष्ट भई नसकेको लैङ्गिक गैर-अनुरूपी व्यक्ति (*Gender non-conforming*), तरल लैङ्गिकता भएका द्रवलैङ्गिक (*Gender fluid*), र अर्धलैङ्गिक (*Demigender*) लगयात विविध लैङ्गिक पहिचानका व्यक्तिहरु पर्दछन्।

दक्षिण एसियाली धर्मसंस्कृतिमा आधारित आफूलाई महिला वा पुरुषको परिभाषामा नराख्ने आफ्नो छुट्टै समाज, संस्कार, रीतिरिवाज र रहन सहन भएका विभिन्न ***तेस्रोलिङ्गी (Third gender)*** समुदायहरू समेत छन्। सामाजिक मूल्य मान्यता अनुसार तेस्रोलिङ्गी व्यक्तिहरूलाई अलौकिक मानिन्छ र उनीहरूले

दिएको आशिर्वाद र श्राप लाग्दछ भन्ने मान्यता समेत रहेको र उनीहरू कुनै सुखद अवशर जस्तै विवाह, नवजन्म शिशु, इत्यादीमा नाच गान गर्ने, आशिर्वाद दिने परम्परागत पेशा पनि गर्दछन्। कतिपय तेस्रोलिङ्गी समुदायहरूको लामो इतिहास नै छ, उनीहरूको छुट्टै स्थानमा समुदायगत बसोबास हुन्छ र आफ्नो समुदायमा कोही भित्रन चाहेमा, समुदायमा भित्री सकेपछी, समुदायमा कसैको मृत्यु हुँदा र कतिपय अवस्थामा समुदायको आफ्नै छुट्टै भाषा वा भाषिका समेत हुने गर्दछ। दक्षिण एसियामा हेर्दा यी तेस्रोलिङ्गी समुदायहरू हिजडा, किन्नर, मंगलामुखी, पावैया, ख्वाजासिरा, खुस्रा, खसुआ, अरवानी, इत्यादी हुन्छन् भने नेपालमा मेटी, कोथी, घाँडे, मौगियाह, मैंबाबु, फुलुमुलु, फोलोक मोलोक, इत्यादी हुन्छन्।

**(ग) यौन विशेषता (Sex characteristics)**

यौन विशेषता भन्नाले मानिसको यौनाङ्ग वा प्रजनन अङ्गबाट छुट्टिने शारीरिकी भिन्नता हो। यस अन्तर्गत अन्तरलिङ्गी (*Intersex*) व्यक्ति अर्थात पुलिङ्गी वा स्त्रीलिङ्गी शरीरका परम्परागत धारणाहरूमा नअटाउने यौन विशेषताहरू (यौनाङ्ग, प्रजनन ग्रन्थी तथा गुणसुत्रको ढाँचा) भएका व्यक्तिहरू पर्दछन्। अन्तरलिङ्गी व्यक्तिहरूमा ४० भन्दा बढी विविधताहरू भएको पाइन्छ, जसमा दुबै यौनाङ्ग हुनु, अस्पष्ट यौनाङ्ग हुनु, बाहिरी यौनाङ्ग र भित्री प्रजनन अङ्ग फरक हुनु, XX र XY बाहेकका गुणसुत्र (*chromosomes*) हुनु केही मुख्य विशेषताहरु हुन् । अन्तरलिङ्गी हुनु एउटा यौन विशेषता हो । अन्तरलिङ्गी व्यक्तिहरूको लैङ्गिक पहिचान पुरुष, महिला वा गैर-द्वयसांखिक हुन सक्छ।

**अतः** माथि विवेचित परिभाषाहरूबाट (क) यौन अभिमुखिकरण, (ख) लैङ्गिक पहिचान र (ग) यौन विशेषता तीन फरक फरक विषयवस्तु रहेको; लैङ्गिक पहिचानमा महिला, पुरुष बाहेक गैर-द्वयसांखिक व्यक्तिहरू र दक्षिण एसियाको धार्मिक परिवेशमा तेस्रोलिङ्गी व्यक्तिहरू समेत रहेको; "महिला" लैङ्गिक पहिचान अन्तर्गत पारलैङ्गिक महिला तथा अन्तरलिङ्गी महिलाहरू समेत पर्ने; र "पुरुष" लैङ्गिक पहिचान अन्तर्गत पारलैङ्गिक पुरुष तथा अन्तरलिङ्गी पुरुषहरू समेत पर्ने कुरा स्पष्ट हुन्छ।

माथी विवेचित तथ्यले यौन अभिमुखीकरण, लैङ्गीक पहिचान र यौन विशेषता (Sexual Orientation, Gender Identity and Sex characteristics) का विविधताहरूलाई व्याख्या गर्दछ भने यी तीन आधार अन्तर्गत देहायका पहिचान हुने व्यक्ति/समूहहरू 'सिमान्तकृत' रहेका छन् :

१) यौन अभिमुखिकरण : समयौनिक व्यक्ति, द्वियौनिक व्यक्ति, सर्वयौनिक व्यक्ति, अयौनिक व्यक्ति।

२) लैङ्गिक पहिचान : पारलैङ्गिक व्यक्ति, गैर-द्वयसांखिक व्यक्ति, तेस्रोलिङ्गी व्यक्ति।

३) यौन विशषता : अन्तरलिङ्गी व्यक्ति।

यसै सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्तिहरूलाई 'लैङ्गिक तथा यौनिक अल्पसंख्यक' पनि भनिन्छ । त्यसैगरी उल्लेखित व्यक्तिहरुलाई 'क्वयेर व्यक्ति' (Queer person) भनेर पनि पहिचान एवं सम्बोधन गर्ने प्रचलन रहेको देखिन्छ । तसर्थ 'सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति', 'लैङ्गिक तथा यौनिक अल्पसंख्यक' व्यक्ति र 'क्वयेर व्यक्ति' पर्यायवाची शब्दहरू हुन् ।

## प्रकरण २ : निर्देशिकाको विवेचना

उक्त निर्देशिकाको दफा २(ग) ले हामी जस्ता व्यक्तिहरुलाई परिभाषित गरिएको छ । जसमा 'यौनिक तथा लैङ्गिक अल्पसंख्यक व्यक्ति' भन्नाले महिला समलिङ्गि (Lesbian), पुरुष (Gay), द्विलिङ्गि (Bisexual), तेश्रो लिङ्गि (Transgender) र अन्तरलिङ्गि (Intersex) व्यक्तिलाई जनाउने उल्लेख छ । दफा २(घ) ले पुरुष र महिला बाहेकका अन्य यौनिक तथा लैङ्गिक अल्पसंख्यकहरुलाई 'अन्य लिङ्गि' भनि परिभाषित गरेको छ । दफा ३(१) ले लैङ्गिक पहिचान अनुसारको नागरिकता प्राप्त गर्न चाहने, प्रचलित कानून बमोजिम नागरिकता प्राप्त गर्न योग्य यौनिक तथा लैङ्गिक अल्पसंख्यक समुदायको व्यक्तिले आफ्नो लैङ्गिक पहिचानका आधारमा अन्य लिङ्ग अंकित नागरिकता लिन चाहेमा सम्बन्धित स्थानिय निकायमा निवेदन दिनु पर्ने व्यवस्था गरेको छ भने दफा ३(२) स्थानिय निकायले प्राप्त निवेदनमा लैङ्गिक पहिचान अनुसारको नागरिकता जारी गर्नको लागि आवश्यक छानविन गरी सम्बन्धित अधिकारी समक्ष सिफारीस गर्नसक्ने व्यवस्था गरेको छ ।

त्यसैगरी निर्देशिकाको दफा ४ को उपदफा (१) ले शैक्षिक संस्थाले विधार्थी वा तालिम लिन चाहने व्यक्तिको भर्ना गर्दाको आवेदन फारम र रजिष्ट्रेशन फारममा लिङ्गको (पहिचानको) महल अन्तर्गत पुलिङ्ग र स्त्रीलीङ्गको अतिरिक्त "अन्य" उल्लेख गरी अभिलेख राख्नुपर्ने व्यवस्था गरेको छ भने ऐ. दफाको उपदफा (२) ले नागरिकता प्रमाणपत्र प्राप्त गर्न, शैक्षिक वा अन्य प्रयोजनका लागि आफु अध्यनरत रहेको शैक्षिक संस्थाबाट यौनिक तथा लैङ्गिक अल्पसंख्यक व्यक्तिहरुले आफ्नो पहिचान बमोजिमको सिफारीस गरीदिन निवेदन दिएमा अभिलेख बमोजिम सिफारीस गरिदिन सक्नेछ भन्ने व्यवस्था गरेको छ । दफा ५(१) ले नेपालको प्रचलित कानून बमोजिम नागरिकता प्राप्त गर्न योग्य यौनिक तथा लैङ्गिक अल्पसंख्यक व्यक्तिहरुले सम्बन्धित स्थानिय निकाय र शैक्षिक संस्थाको अभिलेख बमोजिम सिफारीस भैआए यस समुदायका व्यक्तिहरुको हकमा "लिङ्ग" को ठाँउमा "अन्य" लेखी नागरिकता जारी गर्न सक्नेछ भन्ने व्यवस्था गरेको छ ।

## प्रकरण ३ : उक्त निर्देशिकाले गरेका मानव अधिकर उल्लंघनहरू

सर्वप्रथमत: निर्देशिकाका उक्त व्यवस्थाहले यस समुदायमा रहेको व्यापक बिविधतालाई समेट्न र वास्तविक अर्थमा परिभाषित गर्न सकेको छैन।

### (क) यौन अभिमुखिकरणलाई पनि 'लिङ्ग'को रूपमा व्याख्या गरिएको

प्रकरण १ मा विवेचित परिभाषाहरूद्वारा यो स्पष्ट हुन्छ कि 'यौन अभिमुखिकरण' र 'लैङ्गिक पहिचान' फरक हुन् । निर्देशिकाको २(ग)मा उल्लिखित 'महिला समलिङ्गी', 'पुरुष समलिङ्गी' र 'द्विलिङ्गी' शब्दावलीहरू सहित कोष्ठकमा उल्लिखित Lesbian, Gay, Bisexual अङ्ग्रेजी शब्दहरूको अर्थमा भिन्नता छ। अर्थात् प्रयोग गरिएका नेपाली शब्दहरू त्रुटीपूर्ण छन्। अंग्रेजीको Lesbian नेपालीमा महिला समलिङ्गि, अंग्रेजीको Gay नेपालीमा पुरुष समलिङ्गि होइन।

हामी निवेद क मध्ये Lesbian महिलाहरू पनि छौँ। प्रकरण १ मै विवेचना गरिएको छ कि हामी महिला हौँ र महिला तर्फ अकार्षण महसुस गर्छौँ। यो हाम्रो यौन अभिमुखिकरण हो, लैङ्गिक पहिचान होइन । हामी निवेदक मध्ये Gay पुरुषहरू पनि छौँ। प्रकरण १ मै विवेचना गरिएको छ कि हामी पुरुष हौँ र पुरुष तर्फ आकर्षण महसुस गर्छौँ। यो हाम्रो यौन अभिमुखिकरण हो, लैङ्गिक पहिचान होइन। हामीले नेपाली भाषामा आफ्नो यौन अभिमुखिकरणलाई 'समयौनिक' भनी व्याख्या गर्छौँ। ग्रिसेली भाषाको homós अर्थात् same / उस्तै बाट उत्पत्ति भएको अङ्ग्रेजी उपसर्ग homo र sexuality मूल शब्दसँग मिलेर homosexual, homosexuality शब्दहरू छन् भने यस्को संस्कृत/नेपाली उपसर्ग 'सम' रही 'यौनिकता' मूल शब्दसँग मिलेर समयौनिक, समयौनिकता शब्दहरू छन् । हामी समयौनिक व्यक्तिहरू कुनै हिसाबले 'अन्यलिङ्गी' वा एक प्रकारको लैङ्गिकता होइनौँ। हाम्रो यौन अभिमुखिकरणलाई पनि 'लिङ्ग'को रूपमा व्याख्या गरी स्थापित यस निर्देशिकाले हाम्रो वास्तविक लैङ्गिक पहिचानको अधिकारबाट हामीलाई वञ्चित गरेको छ।

त्यसैगरी अंग्रेजीको Bisexual पनि नेपालीमा 'द्विलिङ्गि' होइन, 'द्वियौनिक' हो । हामी निवेदक मध्ये पनि Bisexual व्यक्तिहरू पनि छौँ। हामी महिला र पुरुष दुबै प्रति आकर्षण महसुस गर्दछौँ र यो हाम्रो यौन अभिमुखिकरण हो। ल्याटिन भाषाको bis  अर्थात् twice / दोब्बर बाट उत्पत्ति भएको अङ्ग्रेजी उपसर्ग bi र sexuality मूल शब्दसँग मिलेर bisexual, bisexuality शब्दहरू छन् भने यस्को नेपाली उपसर्ग 'द्वि' रही 'यौनिकता' मूल शब्दसँग मिलेर द्वियौनिक, द्वियौनिकता शब्दहरू छन् । हामी द्वियौनिक व्यक्तिहरू कुनै हिसाबले 'अन्यलिङ्गी' वा एक प्रकारको लैङ्गिकता होइनौँ। हाम्रो यौन अभिमुखिकरणलाई पनि 'लिङ्ग'को रूपमा व्याख्या गरी स्थापित यस निर्देशिकाले हाम्रो वास्तविक लैङ्गिक पहिचानको अधिकारबाट हामीलाई वञ्चित गरेको छ।

Lesbian, Gay, Bisexual - समयौनिक र द्वियौनिक व्यक्ति हुनु 'लैङ्गिक पहिचान' होइन 'यौन अभिमुखिकरण' हो । 'यौन अभिमुखिकरण'लाई लैङ्गिक पहिचानको रूपले परिभाषित गर्दा हामीलाई हानि

पुरेको छ । संविधान, ऐन, कानुनले 'यौन अभिमुखिकरण' उल्लेख गरिने नागरिकता परिचयपत्रको परिकल्पना गरेको छैन । कुनै विषमयौनिक (Heterosexual) व्यक्तिले नागरिकता प्रमाणपत्रमा 'म महिला मनपराउने पुरुष हुँ' वा 'म पुरुष तर्फ आकर्षित हुने महिला हुँ' भनेर लेख्दैनन्, लेख्नुपर्दैन । त्यसै गरी हामी समयौनिक, द्वियौनिक व्यक्तिहरूलाई नागरिकता प्रमाणपत्रमा यौन अभिमुखिकरण उल्लेख गराउन चाहँदैनौँ, र गर्नुपर्छ भन्ने विषयको कुनै संवैधानिक आधार छैन ।

**(ख) पारलैङ्गिक व्यक्तिहरूको लैङ्गिक पहिचानको अधिकार हनन**

उक्त निर्देशिकाको २(ग)मा उल्लिखित परिभाषा अन्तर्गत नेपाली शब्दावली 'तेस्रोलिङ्गी' र कोष्ठकमा अङ्ग्रेजी शब्दावली '*Transgender*' उल्लेख गरी त्रुटी स्थापित गरिएको छ । नेपाली भाषाको 'तेस्रोलिङ्गी' अङ्ग्रेजी भाषामा '*Third Gender*' हुन्छ भने अङ्ग्रेजी भाषाको '*Transgender*' नेपाली भाषामा 'पारलैङ्गिक' हुन्छ । 'पारलैङ्गिक' हुनु र 'तेस्रोलिङ्गी' हुनु तात्विक रूपले फरक लैङ्गिक पहिचानहरू हुन् । *Transgender* व्यक्तिहरु आफुलाई तेश्रोलिङ्गी नभई स्पष्ट रुपमा महिला वा पुरुष मध्ये एक भएको भनी पहिचान गर्दछन् । हामी निवेदक मध्ये पारलैङ्गिक महिलाहरू पनि छौँ । हाम्रो लैङ्गिक पहिचान महिला हो, 'अन्यलिङ्गी' वा 'तेस्रोलिङ्गी' होइन । हामी निवेदक मध्ये पारलैङ्गिक पुरुषहरू पनि छौँ । हाम्रो लैङ्गिक पहिचान पुरुष हो, 'अन्यलिङ्गी' वा 'तेस्रोलिङ्गी' होइन । हाम्रो लैङ्गिक पहिचान महिला वा पुरुष मध्ये एक रहँदा रहँदै पनि 'अन्यलिङ्गी'को रूपमा व्याख्या गरी स्थापित यस निर्देशिकाले हाम्रो वास्तविक लैङ्गिक पहिचानको अधिकारबाट हामीलाई वञ्चित गरेको छ ।

निर्देशिकामा उल्लिखित यही भाषिक त्रुटीका कारण पारलैङ्गिक महिला तथा पुरुषहरूले 'अन्यलिङ्गी' भनेर कागजपत्र बाउनुपर्ने बाध्यता त छ नै, साथ साथै कतिपय आम सञ्चारका माध्यमहरूले पारलैङ्गिक महिला तथा पुरुषहरूलाई 'तेस्रोलिङ्गी' भनी समाचार प्रकाशनमा ल्याउने र यो गल्ती सच्याउन माग गर्दा समेत यही निर्देशिका औँल्याउने एवं प्रेस काउन्सिलले पनि यस्ता विवादहरू निरुपण गर्न नसकेको अवस्था छ । निर्देशिकाको एक भाषिक त्रुटीले हजारौँ पारलैङ्गिक व्यक्तिहरूको जीवनमा प्रतिकूल असर पुर्याएको छ ।

**(ग) अन्तरलिङ्गी व्यक्तिहरूको लैङ्गिक पहिचानको अधिकार हनन**

हामी अन्तरलिङ्गी व्यक्तिहरू अन्तरलिङ्गी हुनु हाम्रो यौन विशेषता हो, लैङ्गिक पहिचान होइन । हाम्रो लैङ्गिक पहिचान अरु व्यक्तिहरूको जस्तै हाम्रो अन्तरात्माको अनुभूती / स्वःअनुभूती बमोजिम हुन्छ । अन्तरलिङ्गी व्यक्तिहरूले आफूलाई महिला, पुरुष वा गैर-द्वयसांखिक भनी पहिचान गर्न सक्दछन् । तसर्थ अन्तरलिङ्गी यौन विशेषता हुन बित्तिकै नीज स्वतः 'अन्यलिङ्गी' हुँदैन । नीजको स्वःअनुभूती बमोजिम महिला, पुरुष वा गैर-द्वयसांखिक लैङ्गिक पहिचान हुन्छ । हामी निवेदन मध्ये अन्तरलिङ्गी पुरुषहरू पनि छौँ । अन्तरलिङ्गी हाम्रो यौन विशेषता हो, र हाम्रो लैङ्गिक पहिचान 'पुरुष' हो । अन्तरलिङ्गी यौन विशेषता

हुन बित्तिकै स्वतः 'अन्यलिङ्गी' भनी परिभाषित गरेको यस निर्देशिकाले हाम्रो वास्तविक लैङ्गिक पहिचानको अधिकारबाट हामीलाई वञ्चित गरेको छ।

### (घ) महिला र पुरुष बाहेकका लैङ्गिक पहिचानहरूको 'अन्यकरण'

महिला र पुरुष बाहेक पनि विविध लैङ्गिक पहिचानहरू छन्। यसलाई समष्टिगत रूपमा गैर-द्वयसांखिक पनि भनिन्छ। नेपालको धर्म-संस्कृति अनुसार 'तेस्रोलिङ्गी' भनी पहिचान गर्ने व्यक्तिहरू पनि छन्। यस निर्देशिकामा उल्लेख नगरिएतापनि विभिन्न स्रोतहरूबाट पाएको जानकारी अनुसार गृह मन्त्रालयले महिला पुरुष बाहेक 'अन्य' र 'तेस्रोलिङ्गी' भनी नागरिकता प्रमाणपत्र दिने गरेको छ। त्यसैले तेस्रोलिङ्गी व्यक्तिहरूले तेस्रोलिङ्गी भनी नागरिकता पाउन सक्ने विषयमा कुनै विवाद रहेन, यद्यपि यस निवेदनमा तेस्रोलिङ्गी व्यक्तिहरू बारे हामी चर्चा गर्दैनौँ।

महिला र पुरुष बाहेकका व्यक्तिहरुलाई “अन्य लिङ्गी” भनि भएको परिभाषा भाषिक, कानुनी र व्यवहारिक कुनै पनि दृष्टीकोणबाट जायज देखिदैन। यो अमानवीय, अमर्यादित र अपमानजनक छ। लैङ्गिक पहिचानको यस्तो “अन्यकरण” ले व्यक्तिहरु मध्ये कुनै खास/केन्द्रिय व्यक्ति र अन्य कुनै सहायक अर्थात् समान नरहेको भन्ने समेत बुझाउने भएकोले यो परिभाषा विभेदपूर्ण छ। मान्छेको लैङ्गिक पहिचान कहिल्यै “अन्य” हुन सक्दैन। यसबाट पुरुष र महिला बाहेकका लैङ्गिक पहिचान भएका मानिसहरु प्रतिको सामाजिक रूढिवादी धारणा, विभेद र अन्यायले थप प्रसय पाएको छ। निवेदक मध्ये गैर-द्वयसांखिक व्यक्ति पनि छौँ। आफ्नो लैङ्गिक पहिचानलाई अन्यकरण गरिएको र अन्यको दर्जामा बाँच्नु बाध्य बनाएकोले मेरो आत्मसम्मानपूर्वक बाँच्न पाउने अधिकारको हनन भएको छ। गैर-द्वयसांखिक लैङ्गिक पहिचानलाई मान्यता दिने सन्दर्भमा अन्तराष्ट्रिय अभ्यासमा खासगरी Argentina, Austria, Australia, Canada, Denmark, Germany, Iceland, Netherlands, New Zealand, Pakistan, United Kingdom, United States, Uruguay लगायतका मुलुकहरुले गैर-द्वयसांखिक (Non-binary) लैङ्गिक पहिचान भएका व्यक्तिहरुको हकमा पूरा लेख्न परे "Non-Biinary" र छोटकरीमा लेख्न परे “X” उल्लेख गरी परिचयपत्रहरू जारी गर्ने गरिएको पाइन्छ। अन्तर्राष्ट्रिय यात्राको सवालमा महिला पुरुष बाहेकका लैङ्गिक पहिचानले मान्यता पाएको सबै देशहरूले लिङ्गको महलमा "X" उल्लेख गर्ने गरेको हुँदा नेपालमा मात्र "O" हुने कारणले नेपाली गैर-द्वयसांखिक व्यक्तिहरूलाई यस सन्दर्भमा अन्तर्राष्ट्रिय रूपमा अलग्याइने र यात्रा गर्नपर्दा राहदानी read नहुने जस्ता समस्याहरू पनि आइपर्छ।

### (ङ) थप टिप्पणीहरू

**(क)** निर्देशिकाको २(ख)मा "लैङ्गिक पहिचान भन्नाले हरेक व्यक्तिको भित्री मनबाट आएको अनुभूति र लिङ्ग सम्बन्धी व्यक्तिगत अनुभव जुन जन्मँदाको जैविक लिङ्ग भन्दा विपरीत वा सो प्रतिकूल अन्य पहिरण

बोली र व्यवहारबाट व्यक्त गरिने फरक लैङ्गिक अनुभूती सम्झनुपर्छ" भनि परिभाषित गरिएको छ । उक्त निर्देशिकाका २(ग) र (घ)का परिभाषाहरू यसै २(ख)को परिभाषासँग बाँझिन्छ ।

**(ख)** निर्देशिकाको ३(२)मा उल्लेखित व्यहोरा अनुसार लैङ्गिक पहिचान अनुसार नागरिकता जारी गर्नको लागि 'आवश्यक छानबिन' गर्न सक्ने भाषाले यसै निर्देशिकाको २(ख)को परिभाषासँग बाझिन्छ । "भित्री मनबाट आएको अनुभूती" र "व्यक्तिगत अनुभव" छानबिनको विषय हुँदैन । यद्यपि लैङ्गिक पहिचानका विषयमा भएका सम्मानित सर्वोच्च अदालतद्धारा प्रतिपादित सिद्धन्तहरूले पनि लैङ्गिक पहिचान व्यक्तिको नितान्त वैयक्तिक आत्मनिर्णयको अधिकार भनी स्थापित गरिएको छ ।

**(ग)** निर्देशिकाको ४(२)ले लैङ्गिक पहिचानको विषयलाई न्याय गर्दैन । प्रकरण ४ मा विवेचित रहेको र लैङ्गिक पहिचानको विषयमा सम्मानित सर्वोच्च अदालतको फैसला समेत मध्यनजरमा राख्दा ढिलो गरी लैङ्गिक पहिचान थहा पाउने व्यक्तिले जैविक अङ्गको हिसाबमा पाएको परिचयपत्रहरू संसोधन गर्न पाउने कानुनी हक हुनुपर्छ भनी प्रतिपादन गरिएको छ । शैक्षिक संस्था वा विद्यालयको अभिलेखमा उल्लिखित लिङ्गको महल 'जन्मँदा यौनाङ्गको आधारमा इङ्गित लिंग' हुनु स्वभाविक हुन जान्छ । किनभने विद्यालयमा भर्ना गर्दा जन्म दर्ता आवश्यक पर्दछ र जन्मको ३० दिन भित्र गराइने जन्म दर्ताको लिङ्गको महलमा शिशुको यौनाङ्ग अनुसारकै लिङ्ग उल्लेख हुने स्वभाविक हुन्छ । यद्यपि नीजले आफ्नो लैङ्गिक अनुभूती समाजको त्यो अपेक्षा भन्दा फरक रहेको विषय realise गर्दै, आफ्नो लैङ्गिक पहिचान स्वःविश्वस्त भई आफ्नो वास्तविक लैङ्गिक पहिचानमा जीवनयापन गर्न थाल्नु र त्यसै बमोजिममा परिचयपत्र पाउन खोज्नु जीवनको कुन उमेरमा सम्भव हुन्छ भन्ने विषय व्यक्ति पिच्छे फरक हुन सक्छ । त्यसैले 'अभिलेख बमोजिमको सिफारिस' गर्नुपर्ने प्रावधानले यस विषयलाई न्याय पुर्याएन ।

**(घ)** निर्देशिकाको (६)ले कथित 'अन्यलिङ्गी' व्यक्तिहरूलाई छुट्टै व्यवहार गर्नुपर्ने प्रावधान सहित विभेदपूर्ण स्थिति कायम गरेको छ । महिला र पुरुष उल्लेख गर्ने व्यक्तिहरूको अभिलेख प्रचलन बमोजिमको नागरिकता अभिलेख पुस्तिकाम राखिन्छ भने 'अन्यलिङ्गी' उल्लेख गरी नागरिकता प्राप्त व्यक्तिहरूको अभिलेख छुट्टै रजिष्टर फाइलमा राखिन्छ । नेपालको कुनै प्रचलित ऐन कानुनले नागरिकताको अभिलेख पुस्तिका लैङ्गिकताको आधारमा छुट्याउन पर्ने भनी उल्लेख गरिएको देखिँदैन भने महिला र पुरुष उल्लेख गर्ने व्यक्तिहरूलाई छुट्टा छुट्टै अभिलेख नरहेको सम्बन्धमा महिला पुरुष बाहेकका व्यक्तिहरूलाई अलग्याउनु एक विभेदपूर्ण अभ्यास हो । त्यसै गरी यस प्रकारको नागरिकता लिने व्यक्तिहरूको विवरण छुट्टै महलमा उल्लेख गरी मन्त्रालय पठाउनुपर्ने प्रावधानले अझ अलग्याउने प्रयास गरिएको स्पष्ट देखिन्छ ।

**(ङ)** कथित 'अन्यलिङ्गी'मा नागरिकता प्राप्ति गर्नका निम्ति स्थानीय निकाय र शैक्षिक संस्थाको अभिलेख बमोजिम सिफारिस भैआएमा मात्र गरिने प्रावधान छ तर नं (ग) र प्रकरण ४ मा विवेचित शैक्षिक संस्थाको

अभिलेख लैङ्गिक पहिचान अनुसार सच्याउन पाउने प्रावधान नभएमा लैङ्गिक पहिचान अनुसार नागरिकता प्राप्ती गर्न सक्ने अवस्था रहेन। प्रचलित कानुन अनुसार शैक्षिक प्रमाणपत्रहरूमा लिङ्गको महल सच्याउन मिल्दैन।

**(च)** यस निर्देशिकामा कतै पनि नाम परिवर्तन सम्बन्धि चर्चा नै छैन। अधिकांश नेपाली समाजहरूमा नामले लैङ्गिकता झल्काउने र नाम एवं लैङ्गिक पहिचानको तादाम्य सम्बन्ध रहेको र आफ्नो लैङ्गिक पहिचान अनुसारको नाम राख्न पाउने अधिकार सुनिश्चित गरिएको छैन।

**(छ)** यस्ता विवरणहरूको संवेदनशीलतालाई मध्यनजर गर्दै विवरण सुरक्षा, डाटा सुरक्षा एवं गोपनियताको कुनै प्रावधान गरिएको छैन।

**अनिच्छापूर्ण तेस्रोलिङ्गी पहिचान लाद्नु** अर्को एउटा ठूलो र व्यापक समस्या बन्न गएको छ र निवेदक मध्ये कतिले यो समस्याको शिकार हुन बाध्य भएका छौँ। विशेष गरी आम सञ्चारका माध्यमहरूले व्यक्तिको इच्छा विपरीत तेस्रोलिङ्गी भनी सम्बोधन गर्ने समस्या एकदमै व्यापक रहेको पाइन्छ। पारलैङ्गिक महिला तथा पुरुषहरू, गैर-द्वयसांखिक व्यक्तिहरू र अन्तरलिङ्गी व्यक्तिहरू यसको प्रमुख शिकार भएका छन् भने कतिपय अवस्थामा समयौनिक, द्वियौनिक व्यक्तिहरू समेत यसको शिकार हुन परेको छ। हामी निवेदक मध्ये कतिलाई यस्तै अवस्था आइपरेर प्रेस काउन्सिलमा उजुरी समेत गरेकाछौँ तर काउन्सिलबाट पनि खास यस विषयलाई निवारण गर्न सकेको भने छैन। पारलैङ्गिक (ट्रान्सजेण्डर) व्यक्तिहरूले आफूलाई महिला वा पुरुष भनी पहिचान गर्दा गर्दै पनि, यो विषय स्पष्ट भन्दा भन्दै पनि, जबरजस्ती र अनिच्छापूर्ण ढङ्गले 'तेस्रोलिङ्गी' भनी सम्बोधन गर्ने र सञ्चार माध्यममा समाचार सम्प्रेषण भएको घटनाहरू व्यापक छन्। यसकारण ती व्यक्तिहरूको जीवनमा अझै प्रतिकूल असर र मर्का पुगेको छ।

## प्रकरण ४ : लैङ्गिक पहिचानमा वास्तविक आवश्यकताको पहिचान

नेपालको संविधान धारा १२ प्रदत्त लैङ्गिक पहिचान सहितको नागरिकता प्राप्त गर्न पाउने अधिकार र सम्माननिय सर्वोच्च अदालतले लैङ्गिक पहिचानका विषयमा प्रतिपादित नजीर सिद्धान्त कार्यन्वयन गर्न यस निर्देशिका असफल रहनका साथै उक्त अधिकारलाई अझै कुण्ठित बनाउने प्रकृतिको छ।

समानिक मूल्य मान्यता अनुसार कुनै पनि शिशुको जन्म हुने बित्तिकै उसको शिश्न (Penis) छ भने पुरुष र योनी (Vagina) छ भने महिला भनेर इङ्गित गरिन्छ। यसरी इङ्गित गरिएपछि नीजलाई त्यसै लैङ्गिकता अनुरूप नामांकन गरिने र त्यसै प्रकारको समाजिक अपेक्षा रहने गर्दछ। तर यस सामाजिक मान्यता प्रतिकूल

लैङ्गिक अनुभूति रहेका व्यक्तिहरूले आफ्नो स्वःअनुभूतीको लैङ्गिक पहिचान हासिल गर्नका निम्ति सघन, समावेशी, स्पष्ट र उपर्युक्त कानुनी व्यवस्थाहरूको अभाव छ।

नेपालको कानुनी व्यवस्थाहरू हेर्दा जन्मको ३० दिन भित्र जन्म दर्ता गरिसक्नुपर्ने, जन्म दर्ता अनुसार विद्यालयमा भर्ना हुने, त्यसै अनुसार शैक्षिक प्रमाणपत्रहरू बन्ने, र नागरिकता प्राप्ती गर्न पनि जन्म दर्ता एवं शैक्षिक प्रमाणपत्रहरू आवश्यक पर्ने हुन्छ। नागरिकता लिन योग्य उमेर १६ वर्ष रहेको र यति सानै उमेरमा सबैले लैङ्गिक पहिचान खुलाउन सक्ने स्थिति हुँदैन । विशेष गरी नेपालको सामाजिक परिवेशमा घरनिकाला हुन सक्ने, शैक्षिक संस्थाहरूमा bullying हुन सक्ने डरले आफू आर्थिक र सबै रूपले स्वतन्त्र नभएसम्म लैङ्गिक पहिचान धेरैले खुलाउँदैनन्। यदि नागरिकता लिन योग्य उमेर हुँदा नै पहिचान खुलाउन सकेपनि नागरिकता प्राप्त गर्नका लागि जन्म दर्ता र शैक्षिक प्रमाणपत्र पनि बुझाउन पर्ने हुँदा, यी कागजातहरू समेत संसोधन नहुँदा पहिचान अनुसारको नागरिकता पाउन कानुनी बाधा रहेको छ।

**विविध लैङ्गिक समूहहरूको वास्तविक आवश्यकता हामीले देहाय बमोजिम पहिचान गरेकाछौँ:-**

(क) पारलैङ्गिक महिला (Transgender female) : जन्मँदा यौनाङ्गको आधारमा केटा इङ्गित गरिएका ती व्यक्तिहरू जसको लैङ्गिक अनुभूती र प्रस्तुतीकरण महिला हुन्छ र आफूलाई महिला भनेर पहिचान गरी महिला भएर जीवनयापन गर्न थालेपछि आफ्नो लैङ्गिक पहिचानको आधारमा नागरिकतामा "महिला" उल्लेख गरी संसोधन गर्न र आफूलाई पहिले राखिदिएको नाम त्याग गरेर आफूले इच्छाएको नाम राख्न चाहन्छन्।

(ख) पारलैङ्गिक पुरुष (Transgender male) : जन्मँदा यौनाङ्गको आधारमा केटी इङ्गित गरिएका ती व्यक्तिहरू जसको लैङ्गिक अनुभूती र प्रस्तुतीकरण पुरुष हुन्छ र आफूलाई पुरुष भनेर पहिचान गरी पुरुष भएर जीवनयापन गर्न थालेपछि आफ्नो लैङ्गिक पहिचानको आधारमा नागरिकतामा "पुरुष" उल्लेख गरी संसोधन गर्न र आफूलाई पहिले राखिदिएको नाम त्याग गरेर आफूले इच्छाएको नाम राख्न चाहन्छन्।

(ग) अन्तरलिङ्गी व्यक्तिहरू (Intersex persons) : अन्तरलिङ्गी व्यक्तिहरूको हकमा दुबै यौनाङ्ग वा अस्पष्ट यौनाङ्ग हुनाले उनीहरूलाई जन्मँदा "अन्य" वा अरु कुनै शब्दबाट सम्बोधन गरी वा कतिपय अवस्थामा लिङ्ग उल्लेख नगरी पनि कागजपत्र बनाइएको हुन सक्छ । कतिपय अवस्थाहरूमा समाजले वहिष्कार गर्छ वा लाञ्छना लगाउँछ भन्ने डरले ती बच्चाहरूका अभिभावकको इच्छा अनुसार "महिला" वा "पुरुष" भनी उल्लेख गरी कागजपत्र बनाइन सक्छ। अन्तरलिङ्गी यौन विशेषतका व्यक्तिहरू पनि हुर्केबढे पछि आफ्नो लैङ्गिक अनुभूती र प्रस्तुतीकरण स्वःअनुभूतीमा स्पष्ट हुँदै जाँदा आफू "पुरुष", "महिला" वा "गैर-द्वयसांखिक" भनी

पहिचान गर्दछन् र आफ्नो कागजपत्रहरू आफ्नो स्वःअनुभूतीको लैङ्गिकतासँग मेल नखाएमा उसै गरी लिङ्गको महल वा/र नाम परिवर्तन गर्छन्।

(घ) गैर-द्वयसांखिक (Non-binary) : जन्मँदा यौनाङ्गको आधारमा पुरुष वा महिला जेसुकै इङ्गित गरिएतापनि हुर्केबढे पछि आफ्नो लैङ्गिक अनुभूती र प्रस्तुतीकरण स्वःअनुभूती महिला वा पुरुषको दायराभन्दा फरक भई आफूलाई महिला वा पुरुषमा व्याख्या / पहिचान नगर्ने व्यक्तिहरूले आफ्नो लैङ्गिक पहिचानको आधारमा नागरिकतामा "गैर-द्वयसांखिक (X)" उल्लेख गरी संसोधन गर्न र आफूलाई पहिले राखिदिएको नाम त्याग गरेर आफूले इच्छाएको नाम राख्न चाहन्छन्।

आफ्नो वास्तविक लैङ्गिक पहिचान हासिल गर्नका लागि व्यक्तिको नाम, लैङ्गिक विवरण र टाँसिएको तस्वीर / व्यक्तिको appearance उत्तिकै महत्वपूर्ण विषयहरू हुन्। यी सबै बिना व्यक्तिले आफ्नो वास्तविक लैङ्गिक पहिचान हासिल गर्न सक्दैनन्। लैङ्गिक पहिचान हासिल गर्नु लिङ्गको महल संसोधन गर्नु वा प्राप्ती गर्नु मात्र होइन, नाम र तस्वीर पनि हो।

लैङ्गिक पहिचानको हकसँग गोपनियताको हक पनि महत्वपूर्ण हुन्छ। नयाँ अर्थात् स्वःअनुभूतीको नाम र लैङ्गिक पहिचान स्थापित भैसकेपछि पुरानो अर्थात् जन्मको लिङ्गको आधारमा इंगित नाम र लैङ्गिक पहिचानको मृत्यु भएको मानिन्छ। यदी कसैले कसैलाई मृतनाम, मृत लैङ्गिक पहिचान र सो अनुसारको लैङ्गिक शब्दावली सम्बोधन गरी लिखित, मौखिक वा कुनै पनि रुपमा सम्बोधन गर्दछ भने त्यसलाई लैङ्गिक दुस्बोधन (Misgendering) भनिन्छ। कुनै पनि व्यक्ति मृतनाम नाम, लैङ्गिकता र सो अनुरुपका नाता सम्बन्ध, शब्द र सम्बोधनबाट चिनिन/सम्बोधित हुन चाहदैन। हामी पनि चाहँदैनौँ। त्यसैले हाम्रो मृत नाम, लैङ्गिकता र तस्वीरहरूमा गोपनियताको हक सुनिश्चित हुनुपर्छ।

## <u>प्रकरण ५ : उल्लंघन भएका मानव अधिकारहरू</u>

१) नेपालको संविधान धारा १० कुनै पनि नेपाली नागरिकलाई नागरिकता प्राप्त गर्ने हकबाट बन्चित नगरिने, धारा १२ नेपालको नागरिकता प्राप्त व्यक्तिले निजको आमा वा बाबुको नामबाट लैङ्गिक पहिचान सहितको नेपालको नागरिकताको प्रमाणपत्र पाउन सक्ने व्यवस्था, धारा १६ को सम्मानपुर्वक बाँच्न पाउने हक, धारा १७ स्वतन्त्रताको हक, धारा १८ को समानताको हक, धारा २८ गोपनियताको हक, धारा ३८ महिलाको हक, धारा ४२ सामाजिक न्याय हक।

२) नेपाल पक्ष राष्ट्र रहेको मानवअधिकारको विश्वव्यापी घोषणा पत्र, १९४८, नागरिक तथा राजनितीक अधिकार सम्बन्धी अन्तर्राष्ट्रिय अभिसन्धी, १९६६, नेपालले सबै किसमका जातीय विभदेहरु

अन्त्य गर्ने सम्बन्धी अन्तर्राष्ट्रिय महासन्धि १९६५, आर्थिक, सामाजिक तथा सांस्कृतीक अधिकार सम्बन्धी अन्तर्राष्ट्रिय अभिसन्धी, १९६६, महिला विरुद्धको सबै किसिमको भदेभाव उन्मुलन सम्बन्धी संयुक्त राष्ट्रसंघिय महासन्धी। मानवअधिकारको विश्वव्यापी घोषणा पत्रको धारा २ ले विभेद विरुद्धको हक, ऐ. को धारा ७ र नागरिक तथा राजनीतिक अधिकार सम्बन्धी अन्तर्राष्ट्रिय प्रतिज्ञापत्रको धारा २(३) ले प्रभावकारी उपचार पाउने हक र धारा २६ ले समानताको हक प्रदान गरेको छ। त्यसैगरी आर्थिक, समाजिक तथा सांस्कृतिक अधिकार सम्बन्धी अन्तराष्ट्रिय प्रतिज्ञापत्रको धारा २ र महिला विरुद्धका सबै प्रकारका विभेद उन्मुलन सम्बन्धी महासन्धीको धारा २(१) ले विभेद विरुद्धको हक र ऐ. को धारा २६ ले समानताको हकको व्यवस्था गरेको छ। यी महासन्धीहरुमा व्यक्तिको मानवअधिकार सरंक्षण र सम्बर्द्धन गर्ने तथा सबै किसिमका विभेदको अन्त्य गर्ने प्रावधानलाई स्विकार गरिएको छ। सन्धी सम्बन्धी भियना महासन्धी, १९६९ र नेपाल संन्धी ऐन, २०४७ बमोजिम उल्लेखित अन्तर्राष्ट्रिय कानूनहरुको पालना गर्नुपर्ने नेपाल सरकारको अन्तराष्ट्रिय कानून अन्तर्गतको दायित्व हो।

३) विभिन्न विषयवस्तुमा भएका सर्वोच्च अदालतीय फैसलाहरूमा लैङ्गिक पहिचानलाई आत्मनिर्णयको अधिकार भनी सुनिश्चित गरिएको छ :-

निर्णय नं.७९५८, ने.का.प. २०६५, अङ्क ४ : "जब कुनै पनि व्यक्तिले आफ्नो स्वअनुभूति अनुसारको लैङ्गिक पहिचान हासिल गर्दछ तत्पश्चात उसको जैविक लिङ्ग के हो ? निजले कस्तो यौन साथी रोज्नु पर्ने हो, कस्तो व्यक्तिसँग बैवाहिक सम्बन्ध कायम गर्नुपर्ने हो भन्ने कुराको निर्धारण अरु व्यक्ति, समाज, राज्य वा कानूनले गरिदिने होइन। यो नितान्त रुपमा त्यस्तो व्यक्तिको वैयक्तिक आत्मनिर्णयको अधिकार अन्तर्गत पर्ने।"

परमादेश, नेकाप २०७४, अङ्क १२, नि.नं. ९९२१ : "आफ्नो व्यक्तिगत जीवन कसरी सञ्चालन गर्ने, आफ्नो लैङ्गिक पहिचान के हुने र आत्माको कुन पुकारलाई सुन्ने भन्ने कुरा आत्मनिर्णयको अधिकार हुने।"

परमादेश, नेकाप २०७४, अङ्क ९, नि.नं. ९८७५ : "कुनै पनि व्यक्तिले आफ्नो स्वअनुभूति अनुसारको लैङ्गिक पहिचान हासिल गर्नु निजको नितान्त वैयक्तिक आत्मनिर्णयको अधिकारअन्तर्गतको विषय हो। यसमा अरू व्यक्ति समाज राज्य वा कानूनले जैविक लिङ्ग के हो भनी निर्धारण गर्नु सान्दर्भिक हुँदैन। मानिसको स्वतन्त्रता प्रतिष्ठा र आत्मसम्मानमा चोट पुर्‍याउने खालका कुनै पनि व्यवस्थाहरू मानव अधिकारको दृष्टिकोणबाट समेत मान्य हुन नसक्ने।"

## प्रकरण ६: यस विषयसँग सम्बन्धित र यसै निवेदनसँग संलग्न दस्तावेजहरू

### (क) संयुक्त राष्ट्र संघ

१) UN Transgender Fact Sheet
https://www.unfe.org/wp-content/uploads/2017/05/UNFE-Transgender.pdf
अनौपचारिक नेपाली अनुवाद :- https://archive.org/details/transgender-fact-sheet

२) UN Intersex Fact Sheet
https://www.unfe.org/wp-content/uploads/2017/05/UNFE-Intersex.pdf
अनौपचारिक नेपाली अनुवाद :- https://archive.org/details/intersex-fact-sheet

३) UN Free & Equal Definitions
https://www.unfe.org/definitions/

४) World Health Organization - FAQ on Health and Sexual Diversity An Introduction to Key Concepts
https://www.who.int/gender-equity-rights/news/20170329-health-and-sexual-diversity-faq.pdf

५) UN General Assembly **A/73/152**: Report of the Independent Expert on protection against violence and discrimination based on sexual orientation and gender identity [Page 26, V. Recommendations: - 81. (b) & (d)
https://undocs.org/A/73/152

UN Human Rights Council **A/HRC/43/52**: Report of the Special Rapporteur on the right to privacy [Page 12 & 13: 6. Gender identity and legal recognition – 35 & 36
https://undocs.org/en/A/HRC/43/52

६) Un Human Rights : Sexual Orientation, Gender Identity and Sex Characteristics in International Human Rights Law - HR/PUB/12/06/Rev.1
https://www.ohchr.org/Documents/Publications/Born_Free_and_Equal_WEB.pdf

७) Eliminating forced, coercive and otherwise involuntary sterilization – World Health Organization – Page 7 & 8 : Transgender persons and intersex persons
https://www.ohchr.org/Documents/Publications/Born_Free_and_Equal_WEB.pdf

८) UN Committee on Economic, Social and Cultural Rights - General Comment No.14 (2000) on the right to the highest attainable standard of health §8, General Comment No. 22 (2016) on the right to sexual and reproductive health: §58
https://www.unaids.org/sites/default/files/media_asset/201405_sterilization_en.pdf

९) UN Special Rapporteur on Torture, and other cruel, inhuman or degrading treatment or punishment, report 2016, 5 January 2016, A/HRC/31/57 - 49, 72 (e), (h).
https://undocs.org/A/HRC/31/57

**(ख) अन्तर्राष्ट्रिय सिद्धन्तहरू**

१) Yogyakarta Principles - यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषता सम्बन्धीको अन्तर्राष्ट्रिय सिद्धन्त
**https://yogyakartaprinciples.org/**

**(ग) अन्य देशका अभ्यासहरू**

१) NYC Commission on Human Rights Legal Enforcement Guidance on Discrimination on the Basis of Gender Identity or Expression: Local Law No. 3 (2002); N.Y.C. Admin. Code § 8-102
https://www1.nyc.gov/site/cchr/law/legal-guidances-gender-identity-expression.page

२) California Gender Recognition Act - Senate Bill No. 179 CHAPTER 853
https://leginfo.legislature.ca.gov/faces/billNavClient.xhtml?bill_id=201720180SB179

३) American Psychological Association : Transgender People, Gender Identity and Gender Expression
https://www.apa.org/topics/lgbt/transgender

४) Argentina's Gender Identity Law as approved by the Senate of Argentina on May 8, 2012
https://globaltransaction.files.wordpress.com/2012/05/argentina-gender-identity-law.pdf

५) Transgender Persons (Protection of Riqhts) Act,2018 – Pakistan
http://www.na.gov.pk/uploads/documents/1528787262_286.pdf

६) Parliament of Victoria Births, Deaths and Marriages Registration Amendment Bill 2016
https://www.parliament.vic.gov.au/publications/research-papers/download/36-research-papers/13775-births-deaths-and-marriages-registration-amendment-bill-2016

७) AN ACT to amend the Gender Identity, Gender Expression and Sex Characteristics Act, Cap. 540 – Malta
http://justiceservices.gov.mt/DownloadDocument.aspx?app=lom&itemid=12312&l=1

८) Excerpt from: Prop 74 L (2015-2016) Proposition to the Storting (proposal for a legislative decision) The Legal Gender Amendment Act, Norway
https://tgeu.org/wp-content/uploads/2016/07/Prop74LEng.pdf

९) Australian Human Rights Commission, ISBN 978-1-921449-10-9 - The sex and gender diversity project [Page 3 & 4 : Recommendations]
https://humanrights.gov.au/sites/default/files/content/genderdiversity/SFR_2009_Web.pdf

१०) Tasmania Births, Deaths and Marriages Registration Act 1999 [Part 4 - Change of name, Part 4A - Gender Identity]
https://www.legislation.tas.gov.au/view/html/inforce/current/act-1999-058


**(घ) अनुसन्धान**


१) Legal gender marker and name change is associated with lower negative emotional response to gender-based mistreatment and improve mental health

outcomes among trans populations, SSM - Population Health 11 (2020) 100595 - यो अनुसन्धान पत्र संयुक्त राष्ट्र अमेरिकामा १० वटा विश्वविद्यालयले गरेको हो । यसले कुनै व्यक्तिको आफ्नो लैङ्गिक पहिचान अनुसारको पत्र प्राप्त र आफ्नो लैङ्गिक पहिचानसँग मिल्दो इच्छाएको नाम प्राप्त गर्नु नीजको मनोस्वस्थतासँग सम्बन्ध रहेको विषयलाई अध्ययन गर्दछ, र आफ्नो लैङ्गिक पहिचान अनुसार कागजपत्र हुनाले सुध्रिएको वा improved मनोस्वास्थ्य रहेको र नहुँदा मनोस्वास्थ्यमा प्रतिकूल असर पुगेको निष्कर्ष छ ।
https://www.sciencedirect.com/science/article/pii/S2352827320302329?via%3Dihub

२) Gender-congruent government identification is crucial for gender affirmation, The Lancet Public Health - मनोस्वस्थ्यका निम्ति लैङ्गिक पहिचान अनुसारको परिचयपत्रको भूमीका अध्ययन गरेको
https://doi.org/10.1016/S2468-2667(20)30054-2

३) Gender-concordant identity documents and mental health among transgender adults in the USA: a cross-sectional study, The Lancet Public Health - संयुक्त राष्ट्र अमेरिकामा भएको एक अनुसन्धान जसमा आफ्नो लैङ्गिक पहिचान अनुसारको परिचयपत्र हुँदा र नहुँदा यसले मनोसामाजिक स्वास्थ्यमा पार्ने प्रभावको अध्ययन गरेको छ ।
https://www.thelancet.com/journals/lanpub/article/PIIS2468-2667(20)30032-3/fulltext

४) Gender Recognition as a Human Right, Holning Lau - लैङ्गिक पहिचानको अधिकार मानव अधिकार रहेको र अन्तर्राष्ट्रिय मानव अधिकार प्रावधानमा लैङ्गिक पहिचानको मुद्दा कसरी समावेश हुन्छ एवं लैङ्गिक पहिचानको अधिकारको हननले के कस्ता मानव अधिकारको हनन हुन्छ भन्ने विश्लेषण
https://papers.ssrn.com/sol3/papers.cfm?abstract_id=3056110

५) Gender Identity and Data Protection: Could a Right To Be Forgotten Help ~~Andrew~~ Agnes Online?, TILT,TilburgUniversity,TheNetherlands - कुनै व्यक्तिले आफ्नो स्वःअनुभूती बमोजिमको लैङ्गिक पहिचान स्थापना गर्नका लागि विस्मृतिको अधिकार (Right to be forgotten) र गोपनियताको अधिकार किन महत्वपूर्ण छ भन्ने विश्लेषण
https://papers.ssrn.com/sol3/papers.cfm?abstract_id=2304190

**प्रकरण ७ : माग गरेको उपचार**

१) प्रकरण १ मा विवेचित शब्दावली एवं परिभाषाहरूलाई स्थापित गर्न गराउन सम्बन्धित निकायहरूलाई सिफारिस, पत्राचार लगायतका आवश्यक कार्यवाही गरिपाउँ।

२) गृह मन्त्रालयले जारी गरेको "यौनिक तथा लैङ्गिक अल्पसंख्यक समुदायका व्यक्तिहरूलाई लिङ्गको महलमा 'अन्य' जनाई नागरिकता जारी गर्ने सम्बन्धी निर्देशिका, २०६९"ले गलत, अस्पष्ट, त्रुटीपूर्ण एवं लैङ्गिक पहिचान भन्दा फरक विषयलाई समेत लैङ्गिक पहिचानको रूपमा परिभाषित गरेको, वास्तविक लैङ्गिक पहिचान स्थापित गर्न सक्षम नरहनुका साथै लैङ्गिक पहिचान लगायतको अधिकारहरू समेत हनन गरेको हुनाले उक्त निर्देशिकालाई खारेज गर्न गराउन सम्बन्धित निकायलाई सिफारिस, पत्राचार लगायत आवश्यक कार्यवाही गरिपाउँ।

३) यस निवेदनको प्रकरण प्रकरणमा विवेचित विविध लैङ्गिक समुहहरूले आफ्नो लैङ्गिक पहिचान अनुसारको नागरिकता प्रमाणपत्र लगायतका परिचयपत्रहरू हासिल गर्न, आत्मनिर्णयको आधारमा नाम र लैङ्गिक विवरण संसोधन गर्न पाउने व्यवस्था सहित आवश्यक कानुनी व्यवस्था बनाउनका निम्ति सम्बन्धित निकायलाई सिफारिस, पत्राचार लगायत आवश्यक कार्यवाही गरिपाउँ।

४) कुनै व्यक्तिको मृतनाम, लैङ्गिकता र त्यस सम्बन्धीका विवरणहरू प्रति गोपनियताको हक सुनिश्चित गर्न गराउन सम्बन्धित निकायलाई सिफारिस, पत्राचार लगायत आवश्यक कार्यवाही गरिपाउँ।

**निवेदकहरू**

**संस्था**

१) क्वयेर युथ ग्रुप (QueerYouth Group), Regd No. 244935/077/078
queeryouthgroup.nepal@gmail.com

२) क्याम्पेन फर चेन्ज (Campaign For Change), Regd No. 168301/73/74
campaignforchange17@gmail.com

**व्यक्ति**

१) रुक्शना कपाली, पारलैङ्गिक महिला, ललितपुर

२) इशान रेग्मी, अन्तरलिङ्गी पुरुष, बाजुरा

३) नेहा गौचन

४) दीप्स श्रेष्ठ, गैर-द्वयसांखिक व्यक्ति, सुनसरी

५) प्रार्थना दीक्षित

६) सगुन थापा, पारलैङ्गिक पुरुष, बाग्लुङ

७) शैली चौधरी

८) निवेदक ८, पारलैङ्गिक पुरुष, रुपन्देही

९) बिपिन कडायत, अन्तरलिङ्गी पुरुष, अछाम

१०) निवेदक १०, समयौनिक महिला

११) निवेदक ११, समयौनिक पुरुष

---

हामी क्वयेर युथ ग्रुप, क्याम्पेन फर चेन्ज र पारलैङ्गिक अधिकार समूहले नेपाल संवत् ११४१ साललाई 'बाध्यकारी अन्यलिङ्गी लेबल भिराइने विरुद्ध र लैङ्गिक पहिचानको मान्यताका लागि कार्य वर्ष' घोषणा गरेका छौँ।

यस कार्य वर्षको वेबसाइट: https://actionof1141.wordpress.com/

***

***Registration number – 654***

***Registered date – 22 November 2020, B.S. 2077 Mangsir 7, N.S. 1141 Thinla 4 (Sunday)***

***Translated by – Rukshana Kapali***

***This document is the English translation of the petition that was officially made in Nepali language. Sensitive and private details have been removed in this public copy. In case any nuanced gaps may avail, the copy in Nepali language is the official one. The petition was made under the 'Year of Action for Recognition of Gender Identity & Against Forced Others Gender Labelling 1141'. The petition was sent to the commission via email on the solar New Year day of Nepal Sambat (Era) and was registered on aforementioned date.***

---

**N.S. 1141 Kachhala(01) 01**

**2077 Kartik 4**

**2020 October 20**

To,

The Secretary,

National Human Rights Commission,

Durukhya (Harihar Bhawan), Lalitpur

**Subject : The "Directive regarding issuance of citizenship mentioning 'others' in the gender marker to people of sexual and gender minorities community, 2069 (2012)" promulgated by Ministry of Home Affairs has violated the human rights of we people of marginalized sexual orientation, gender identity and sex characteristics (PoMSOGIESC) and therefore we pledge for studying the violation and taking necessary measures to the respective authority in order to scrap the directive and recommend to establish a comprehensive & inclusive directive/law that allows citizenship with gender identity including correct definitions.**

Honorable,

With regards to the aforementioned subject, Ministry of Home Affairs has promulgated and implemented the “Directive regarding issuance of citizenship mentioning ‘others’ in the gender marker to people of sexual and gender minority community, 2069 (2012)”. The preliminary section of the directive mentions that it’s been seen necessary to issue citizenship with a gender maker ‘others’ apart from male and female in order to create an environment for people of sexual and gender minority community to be able to exercise their right including their own identity uninterrupted. While it has been mentioned that the objective of the directive is to create an environment where people of gender and sexual minority community will be able to exercise their rights including their own identity uninterrupted, the directive since 7 years has created a barrier from being able to receive citizenship card in our gender identity and violated our human rights and constitutionally guaranteed right of gender identity.

**<u>Exhibit 1 : Definitions</u>**

According to the United Nations and various studies and research we petitioners and various organizations working in this sector have identified the following language and vocabulary regarding the gender and sexual minority population’s identity, diversity and people.

### A. Sexual Orientation *(यौन अभिमुखिकरण, Yaun Abhimukhikaran)*

A person’s sexual identity based on sexual and romantic attraction they experience to people of certain gender(s) is sexual orientation. Some examples of sexual orientation are as follows. Heterosexual or Straight *(विषमयौनिक, Bishamyaunik)* people experience sexual and romantic attraction to people of opposite or a different gender. Homosexual *(समयौनिक, Samayaunik)* people experience sexual and romantic attraction to people of

